अङ्क १२
चैत २०७१

शोध-संक्षेप (Research Brief)

# नेपालमा सर्व-संयोजकतासम्बन्धी नीतिको समीक्षा

**परिचय**

यो शोध-संक्षेप सर्व-संयोजकता (यूनिभर्सल कनेक्टिभिटि) सम्बन्धी नेपाली नीतिको समीक्षाको सार हो। यहाँ सर्व-संयोजकता भन्नाले मोबाइल र कम्प्युटरजस्ता उपकरण प्रयोग गरी इन्टरनेटसँग जोडिने स्थिति बुझ्नुपर्छ। नेपालको विद्यमान नीतिमा सुसंयोजित र ज्ञानमा आधारित समाज बनाउन इन्टरनेटमा आधारित प्रविधिका सामान्य र विशिष्ट दुवै किसिमको भूमिका कल्पना गरिएको कुरा यो शोध-संक्षेपले देखाउँछ। नेपाली नीतिमा प्रयुक्त पदावलीले बितेका दुई दशकमा राज्य र निजी क्षेत्र दुवैलाई ठूलो मात्रामा साधन-स्रोत परिचालन गर्न, विस्तारित बजारक्षेत्र निर्माण गर्न र प्रभावशाली बहस परिचालन गर्न सघाएको छ। तर नेपाली समाजमा रहेका विषमता हटाउन हस्तक्षेप जरुरी रहेको र त्यसका लागि धरातलीय यथार्थमा आधारित नीति बनाउने अवसर उपलब्ध छ भन्ने यो शोध-संक्षेपको सुझाव हो।

यो शोध-संक्षेपको पहिलो खण्डमा नेपालको सर्व-संयोजकतासम्बन्धी नीतिको खाका उतारिएको छ। त्यसमा संविधान, नीति, योजना, ऐन, नियमावली र निर्देशिका एवं सरकारका प्राथमिकता र आर्थिक तथा प्राविधिक विकाससँगसँगै तिनमा गरिएका संशोधनको चर्चा छ। दोस्रो खण्डमा सरकारी नीतिले वर्णन गरेका केही खास आदर्शले सीमित सम्भ्रान्तहरूको स्वार्थपूर्ति गर्ने नयाँ संस्था र बहसलाई जन्माएको देखाइएको छ। नीतिमा प्रायः देखापर्ने तीन ओटा पदावलीको उद्गम खोज्दै यो संक्षेपको तेस्रो खण्डले धरातलीय यथार्थमा आधारित नीति आवश्यक रहेको तर्क गर्छ। साथै, अब बन्नुपर्ने नीतिले प्रविधि हस्तान्तरण र विस्तारसम्बन्धी केही नवीन अध्ययनको नतिजाले देखाएझैं सरकार, व्यवसाय र नागरिकबीच सूचना प्रवाहित गर्नभन्दा ठूलो उद्देश्य राख्नुपर्ने जिकिर यो खण्डले गर्छ। यो शोध-संक्षेपले संरचनात्मक र भौगोलिक असमानता कम गर्न स्पष्ट उद्देश्य लिई तथ्य-प्रमाणमा आधारित नीति बनाउन आग्रह गर्छ। सूचना सञ्चार प्रविधिले स्वतः यस्ता असमानता भत्काउँदै लैजानेछ भन्ने विद्यमान नीतिलेझैं कोरा अनुमान नगरी नयाँ नीतिमा प्रविधि भनेको पनि समाजद्वारा निर्मित वस्तु हो भन्ने कुरा आत्मसात् गरिनु उपयुक्त हुन्छ।

मार्टिन चौतारी

२७ जीतजङ्ग मार्ग, थापाथली
पो.ब.नं. १३४७०
काठमाडौं, नेपाल
टेलिफोन : ०१-४२३८०५०
फ्याक्स : ०१-४२४००५९
chautari@mos.com.np
www.martinchautari.org.np

## नेपालमा सर्व-संयोजकतासम्बन्धी नीतिगत अवस्था

नेपालमा सर्व-संयोजकतासम्बन्धी नीतिमा अधोर्ध्व (भर्टिकल) र तेर्सो (होराइजेन्टल) अन्तःसम्बन्ध भएका सरकारी दस्तावेज पर्छन् (सँगैको बक्स हेर्नुहोला)। यिनमा संविधान सर्वोच्च स्थानमा छ भने नेपाल सरकार र यस मातहतका अधिकारवाला निकायले बनाएका निर्देशिका र कार्यविधि सबैभन्दा मुनि पर्छन्। नेपालको अन्तरिम संविधान, २०६३ को धारा १२ ले अभिव्यक्ति स्वतन्त्रता र धारा १५ ले प्रकाशन, प्रसारण तथा छापाखानासम्बन्धी हक सुनिश्चित गरेको छ।[1] धारा १५ ले छापा, विद्युतीय र अनलाइन मिडिया संस्थालाई राज्यले कुनै बहानामा बन्द गर्न नपाउने गरी संवैधानिक संरक्षण प्रत्याभूत गरेको छ। नेपालमा विज्ञान तथा प्रविधि मन्त्रालय र सूचना तथा सञ्चार मन्त्रालय सूचना प्रविधिसम्बन्धी नीति बनाउने मन्त्रालय हुन्। विज्ञान तथा प्रविधि मन्त्रालयले सूचना प्रविधि क्षेत्रका सरोकारवालासित परामर्श गरी सूचना प्रविधि नीति, २०५७ बनाएको हो। सर्व-संयोजकतासँग गाँसिएका दूरसञ्चार, प्रसारण र इन्टरनेटजस्ता विषयबीच तेर्सो सम्बन्ध देखिन्छ। यिनीहरूसँग अधोर्ध्व जोडिएका दस्तावेज पनि छन्।

प्रत्येक दुई-दुई वर्षमा संशोधन गर्ने भनिए पनि नयाँ सूचना प्रविधि नीति एक दशकपछि २०६७ सालमा मात्र ल्याइयो। त्यतिखेर स्वतन्त्र र खुला सफ्टवेयर ब्रोडब्याण्ड सञ्जाल र ताररहित प्रविधिको विस्तार जस्ता अवसर उपलब्ध भएसँगै प्रविधिसम्बन्धी थप स्पष्ट नीति आवश्यक भएको ठानियो। सूचना तथा सञ्चार मन्त्रालयले भने इन्टरनेटलाई दूरसञ्चार प्रविधिको मेरुदण्ड मान्दै सूचना तथा सञ्चार क्षेत्रको दीर्घकालीन नीति, २०५९ र दूरसञ्चार नीति,

**नेपालमा इन्टरनेटसँग अन्तःसम्बन्धित नीतिहरू**

**संविधानः नेपालको अन्तरिम संविधान, २०६३**
**नीतिहरूः** सूचना प्रविधि नीति, २०६७; दूरसञ्चार नीति, २०६०; सूचना तथा सञ्चार क्षेत्रको दीर्घकालीन नीति, २०५९; अनौपचारिक शिक्षा नीति, २०६३
**योजना** : विद्युतीय शासन गुरुयोजना मस्यौदा, सन् २००६; शिक्षामा सूचना सञ्चार प्रविधि गुरुयोजना, सन् २०१३–२०१७; Wireless Broadband Master Plan for the Federal Democratic Republic of Nepal, 2012.
**ऐन/नियमावलीः** पेटेण्ट, डिजाइन र ट्रेडमार्क ऐन, २०२२; प्रतिलिपि अधिकार ऐन, २०५९; प्रतिलिपि अधिकार नियमावली, २०६१; विद्युतीय कारोबारसम्बन्धी ऐन, २०६३; दूरसञ्चार ऐन, २०५३; दूरसञ्चार नियमावली, २०५४;
Sub-Regulations for (Mechanism on) Specifying the Service Providers, 2064 v.s.; Existing Regulatory System Related to VoIP and Internet Telephony, not dated
**निर्देशिका र कार्यविधिः** अन्तरआवद्धता निर्देशिका, २०६५; General Licensing Guidelines, not dated; Internet with Email Guidelines, not dated; Network Service Guidelines, not dated; VSAT User Guidelines, not dated; शुल्क स्वीकृति निर्देशिका, मिति उल्लेख नभएको; General Directives related to Allied Services of Telecommunication, not dated; Procedure for the Operation and Management of E-village Programme 2070 v.s.; Directives for Laying and Maintaining Optical Fiber Network 2012; Directives related to the Construction and Management of the Government Office Websites, 2068 v.s.; कम्पनी (विद्युतीय फाईलिङ) निर्देशिका, २०६९

[1] नेपाल सरकार। २०७१। *नेपालको अन्तरिम संविधान, २०६३*। काठमाडौं : कानून किताब व्यवस्था समिति।

२०६० बनायो। यी दुवै नीतिको केन्द्रमा भने इन्टरनेट संयोजकता (कनेक्टिभिटि) छैन।

माथि भनिएझैं सर्व-संयोजकताका विविध अंश दूरसञ्चार, प्रसारण र इन्टरनेट गरी तीन ओटा प्रविधिसँग सम्बन्धित नीतिमा उल्लेख भए पनि ती मुख्यतः इन्टरनेट-केन्द्रित नै देखिन्छन्।[२] शिक्षा, विद्युतीय व्यापार र बैंकिङजस्ता अरू सेवा सुविधाको केन्द्रमा पनि यस्ता नीति समाविष्ट छन्। उदाहरणका लागि सूचना प्रविधि नीति, २०५७ र यसको २०६७ सालमा आएको परिमार्जित संस्करणमा शिक्षामा सूचना प्रविधिको प्रयोग गर्न जोड दिइयो। तर त्यस्तो प्रयोग कसरी गर्न सकिन्छ उल्लेख गरिएन। शिक्षा मन्त्रालयले शिक्षाका लागि सूचना तथा सञ्चार प्रविधि गुरुयोजना, सन् २०१३-२०१७ बनाउँदा शिक्षामा पहुँच र यसको गुणस्तर बढाउन सूचना प्रविधिलाई मुख्य अवयव मान्यो। त्यस्तै, विद्युतीय शासन ल्याउन विद्युतीय शासन गुरुयोजना परामर्श प्रतिवेदनको मस्यौदा वि.सं. २०६३ मा बन्यो। ब्रोडब्याण्ड प्रविधिको प्रभावकारी प्रयोगका लागि विश्व दूरसञ्चार संघ (आइटियु) ले पनि ताररहित ब्रोडब्याण्ड गुरुयोजनाको मस्यौदा वि.सं. २०६९ (सन् २०१२) मा बनायो।[३] सूचना प्रविधि नीतिले निम्न ऐन नियम बनाउन अथवा संशोधन गर्न प्रेरित गऱ्यो : पेटेण्ट, डिजाईन र ट्रेडमार्क ऐन, २०२२; प्रतिलिपि अधिकार ऐन, २०५९; र विद्युतीय कारोबारसम्बन्धी ऐन, २०६३। साइबर कानून भनिने विद्युतीय कारोबारसम्बन्धी ऐन, २०६३ विद्युतीय लेनदेनलाई सहज तुल्याउन ल्याइएको हो। कति नेपालीको इन्टरनेटमा पहुँच छ भन्ने तथ्यमा यी जम्मै योजना र कानूनको प्रभावकारिता निर्भर गर्छ।

दूरसञ्चार ऐन, २०५३ ले दिएको अधिकार प्रयोग गरी नेपाल दूरसञ्चार प्राधिकरणले कतिपय विनियम बनाएको छ। प्राधिकरणले इन्टरनेटसम्बन्धी सेवा प्रदान गर्ने व्यक्ति र संस्थाका लागि निम्न कार्यविधि जारी गरेको छ : सामान्य इजाजत प्रदान गर्ने कार्यविधि (मिति उल्लेख नभएको), इमेलमा सञ्जाल/नेटवर्क सेवा कार्यविधि (मिति उल्लेख नभएको), भिस्याट प्रयोगकर्ताका लागि कार्यविधि (मिति उल्लेख नभएको), अन्तरजडान कार्यविधि (सन् २००८), र सञ्चार सेवाका लागि शुल्क अनुमतिसम्बन्धी (मिति उल्लेख नभएको)।[४] त्यस्तै, सुशासन (व्यवस्थापन तथा सञ्चालन) ऐन, २०६४ ले दिएको अधिकार प्रयोग गरी सरकारी कार्यालयको वेबसाइट बनाउन र व्यवस्थापन गर्न एउटा कार्यविधि यो प्राधिकरणले जारी गरेको छ।[५] कम्पनी ऐन, २०६३ ले कम्पनी रजिष्ट्रारको कार्यालयलाई निर्देशिका जारी गर्ने अधिकार दिएअनुसार त्यस कार्यालयले अनलाइन रजिस्ट्रेशन सेवा दिन कम्पनी (विद्युतीय फाइलिङ) निर्देशिका, २०६९ बनायो ।

सूचना प्रविधिसम्बन्धी धेरै ऐन तथा नियम आए पनि संयोजकता (कनेक्टिभिटि) सम्बन्धी विविध बुँदाउपर आलोचनात्मक दृष्टिको अभाव छ। इन्टरनेटसम्म पहुँच र त्यसको प्रयोग अनि इन्टरनेटमा उपलब्ध सामग्रीबारे महत्त्वपूर्ण मुद्दा देखापरेका छन्। जस्तो, निजी क्षेत्रको मागअनुसार पेटेण्ट अधिकार, विद्युतीय कारोबार र प्रतिलिपि अधिकार समेट्ने कानून बनेका छन् तर तिनले विद्युतीय भुक्तानी (ई-पेमेन्ट), विद्युतीय डाटाको सुरक्षा र

[२] अफ्रिकी देशहरूमा पनि यस्तै देखिन्छ, हेर्नुहोस् Nicol, Chris, ed. 2003. *ICT Policy: A Beginner's Handbook.* Johannesburg: The Association for Progressive Communications. नेपालमा डिजिटल ब्रोडकास्टिङबारे अझै नीति बनेको छैन।

[३] ITU. 2012. *Wireless Broadband Master Plan for the Federal Democratic Republic of Nepal.* Geneva: ITU.

[४] यी कार्यविधि अङ्ग्रेजी भाषामा मात्र छन्। यहाँ गरिएको अनुवाद आधिकारिक होइन।

[५] Government of Nepal (GoN). 2008. The Electronic Transactions Act, 2063 v.s. Available at www.lawcommission.gov.np/index.php?option=com_remository&Itemid=14&func=startdown&id=142&lang=en; accessed 9 October 2014.

दुरुपयोगसँग सम्बन्धित निर्णयात्मक मुद्दा भने समेट्दैनन्।[६] विद्युतीय कारोबारमा हुने जालसाजी र संवेदनशील डाटाको प्रकाशनलाई नियन्त्रण गर्न बनाइएका केही प्रावधान इन्टरनेटमा हुने सबै गतिविधिमाथि लागू हुन्छ-हुँदैन स्पष्ट हुन आवश्यक छ।[७] खास गरी विद्युतीय कारोबार ऐनको धारा ४७ मा इन्टरनेटमा 'गैरकानूनी सामग्री' को प्रकाशन गरे एक लाख रुपैयाँ जरिवाना वा पाँच वर्ष कैद वा दुवै सजाय हुने उल्लेख छ । ससरीका अब्दुल रहमानविरुद्ध सार्वजनिक मर्यादा, गाली बेइजती, र सार्वजनिक सद्भावसम्बन्धी मुद्दामा पनि यही दफा प्रयोग गरिएको छ।[८] यो दफाको परिधिबारे व्याख्या हुन आवश्यक छ।

## नीतिका प्रभाव

नयाँ संस्था खडा गर्नु र संयोजकतालाई सर्वस्वीकार्य राष्ट्रिय एजेण्डा बनाउनेमा निजी क्षेत्रको सहभागिताका लागि स्रोत-साधन जम्मा गर्नु नै सर्व-संयोजकतासम्बन्धी नीतिहरूको भौतिक र विचारधारात्मक प्रभाव देखिएको छ। सूचना प्रविधि उच्चस्तरीय आयोग, सूचना प्रविधि विभाग, राष्ट्रिय सूचना प्रविधि केन्द्र र नेपाल दूरसञ्चार प्राधिकरणजस्ता ठूला संस्थाको गठन वि.सं. २०५७ देखि थालिएका छन्। सूचना प्रविधि उच्चस्तरीय आयोगबाहेक अरू तीनओटा संस्था सूचना तथा सञ्चार मन्त्रालय र विज्ञान, प्रविधि तथा वातावरण मन्त्रालयअन्तर्गत छन्। यी दुई मन्त्रालयबीच सर्व-संयोजकतासम्बन्धी कार्यक्रमको स्वामित्वका विषयमा विवाद छ।[९] २०६० भदौ ८ मा प्रधानमन्त्री कार्यालयअन्तर्गत बनेको सूचना प्रविधि उच्चस्तरीय आयोगले सूचना प्रविधि क्षेत्रबारे 'विशिष्ट रणनीतिक निर्देशन' दियो।[१०] आयोगलाई पहिलो वर्ष रु. ३ करोड ७० लाख बजेट विनियोजित थियो। आयोगले टेलिसेन्टरहरू स्थापना गर्‍यो, बनेपास्थित सूचना प्रविधि पार्कको व्यापार योजना तयार गर्‍यो र विद्युतीय शासनसम्बन्धी गुरुयोजनाको मस्यौदा बनाउन सघायो।[११] तर आयोगको कामकारवाहीलाई सम्बन्धित मन्त्रालयहरूले हस्तक्षेप ठाने। २०६५ जेठमा मुलुक गणतन्त्र घोषित भएपछि यस आयोगलाई निरङ्कुश संस्थाका रूपमा निरन्तर प्रस्तुत गरियो र सरोकारवालाको विरोधको बावजूद २०६८ मंसिर २६ मा मन्त्रिपरिषद्को निर्णयद्वारा उक्त आयोग विघटन गरियो। त्यही दिन विज्ञान, प्रविधि तथा वातावरण मन्त्रालयमातहत समन्वय केन्द्रको रूपमा सूचना प्रविधि विभाग गठन गरियो। पहिलो वर्षमै यस विभागले अनुगमन र परामर्श कार्य गर्न एक करोड रुपैयाँ बजेट माग गर्‍यो।[१२] विभागले सूचना प्रविधि पार्कको विशाल पूर्वाधारको सुपरिवेक्षण गर्छ । २०७१ सालमा राष्ट्रिय सूचना प्रविधि मार्गचित्र (२०७१-२०७५) को

[६] Mishra, Bam Bahadur. 2008. The Development of E-payment and Challenges in Nepal. In *Development of E-payments and Challenges for Central Banks in SEACEN Countries*, pp. 159–168. Kuala Lumpur: The South East Asian Central Banks; नेपालमा डिजिटल डाटाको सुरक्षा र दुरुपयोग जस्ता मुद्दाबारे हेर्नुहोस्, Raj, Yogesh and Santa Bahadur Basnet. 2014. Digital Democracy on Demand. *The Kathmandu Post*, 16 July, p. 6.

[७] श्रेष्ठ, डम्बर कृष्ण। २०७१। कानूनको दुरुपयोग। *हिमाल* २२(१२) : २२-२३।

[८] GoN. 2008. The Electronic Transactions Act, 2063 v.s. Available at www.lawcommission.gov.np/index.php?option=com_remository&Itemid= 14&func=startdown&id=142&lang=en; accessed 9 October 2014; अब्दुल रहमानको मुद्दाबारे हेर्नुहोस् खड्का, जीतेन्द्र। २०७१। पुलिस राज। *नेपाल* १४(४७) : १२-१३।

[९] The Himalayan Times. 2014. House Committee Seeks Clarity on IT Development. Available at www.thehimalayantimes.com/fullNews.php?headline=House+committee+seeks+clarity+on+IT+development&NewsID=433063; accessed 25 November 2014.

[१०] HLCIT. 2004. Background. Available at http://web.archive.org/web/20040223112855/http://hlcit.gov.np/; accessed 9 October 2014.

[११] श्री ५ को सरकार। २०६३। सूचना प्रविधि उच्चस्तरीय आयोग। *महालेखा परीक्षकको वार्षिक प्रतिवेदन, २०६३*। काठमाडौं : महालेखा परीक्षकको कार्यालय; श्री ५ को सरकार। २०५७। *सूचना प्रविधि नीति, २०५७*। काठमाडौं : विज्ञान तथा प्रविधि मन्त्रालय।

[१२] नागरिक। २०६८। सूचना प्रविधि विभाग गठन हुने। २५ असार, पृ. ४।

मस्यौदामार्फत अल्प, मध्य र दीर्घकालीन लक्ष्य हासिल गर्ने योजना बनाएको छ।[१३]

सन् २००२ मा स्थापित राष्ट्रिय सूचना प्रविधि केन्द्रको वैधानिकता सूचना प्रविधि नीति, २०५७ मा निहित थियो । यस नीतिमा यो केन्द्र सूचना प्रविधिसम्बन्धी नीति कार्यान्वयन गर्ने, निजी क्षेत्रको सहभागिता संपरिवेक्षण गर्ने, सरकारी संस्थालाई कम्प्युटरसम्बन्धी सेवा दिने, र राष्ट्रिय नियामक संस्थाको रूपमा प्रस्तावित थियो। आ.व. २०७०/७१ मा यस केन्द्रका लागि रु. ६ करोड ५६ लाख विनियोजित थियो।[१४] सूचना प्रविधि नीति, २०५७ ले केन्द्रको मातहतमा एउटा एकीकृत तथ्याङ्क बैंक (NIDC) को परिकल्पना गरेको छ। यसले सरकारको डिजिटल सामग्री बढाउने काम गर्दछ।[१५] विद्युतीय शासनसम्बन्धी गुरुयोजनाको मस्यौदामा यस बैंकले केन्द्रीय सरकारी विभाग, सरकारी निकाय र स्थानीय सरकारलाई विद्युतीय शासनसम्बन्धी सेवा दिनेछ भनिएको छ।[१६] कुल ३५ लाख अमेरिकी डलरमा बनाइएको यो तथ्याङ्क बैंक २०६५ चैतमा राष्ट्रिय सूचना प्रविधि केन्द्रलाई हस्तान्तरण गरियो।[१७]

२०५४ फागुन २० मा नेपालको दूरसञ्चार क्षेत्र नियमन गर्ने संस्था नेपाल दूरसञ्चार प्राधिकरण भयो। सूचना तथा सञ्चार मन्त्रालयअन्तर्गत रहेको प्राधिकरणले दूरसञ्चार ऐन, २०५३ र दूरसञ्चार नियमावली, २०५४ अनुसार काम गर्छ। दूरसञ्चार ऐन, २०५३ ले यस प्राधिकरणका लागि १५ ओटा जिम्मेवारी सुम्पेको छ जसमा नयाँ प्रविधिको विकास र प्रयोग गर्न परामर्श र अनुसन्धान समेत पर्दछ। यो ऐनले दूरसञ्चारको सम्बन्धमा नेपाललाई अन्तर्राष्ट्रिय दूरसञ्चारको एउटा ट्रान्जिट बनाउन सघाउने निकायका रूपमा प्राधिकरणलाई हेर्छ।[१८] दूरसञ्चारका अरू क्षेत्रभन्दा सहजै फरक देखिने भनेको यसको लाइसेन्स वितरण गर्ने अधिकार हो। नेपालमा दूरसञ्चार क्षेत्रलाई अझ खुला बनाउन विश्व बैंकले प्राधिकरण र यसको माउ संस्था सूचना तथा सञ्चार मन्त्रालयलाई मजबूत बनाउन खाजेको थियो। त्यसका लागि निम्न विषयमा प्राधिकरणका कर्मचारीलाई तालिम आवश्यक भएको बैंकको परियोजना प्रतिवेदनमा उल्लेख छः सेवा प्रदायकबीच अन्तःसंयोजन (इन्टरकनेक्सन) सुनिश्चित गर्न, लाइसेन्सले तोकेका शर्त पालना गराउन, कार्य सम्पादनको गुणस्तर निगरानी गर्न, सेवाशुल्क निर्धारण गर्न, विश्व व्यापार संगठन र जेनरल एग्रिमेन्ट अन टेरिफ एण्ड ट्रेड इन सर्भिसेजका शर्तको समीक्षा गर्न, र विभिन्न प्रणालीबीच अन्तर्समन्वय गर्न रेडियो र दूरसञ्चारका उपकरणको प्रकार अनुमति दिन ।[१९] तर मन्त्रालयमार्फत हुने राजनीतिक नियुक्तिले प्राधिकरणको स्वायत्ततामा पटकपटक असर पुऱ्याएको छ जसले गर्दा कुनै

[१३] सूचना प्रविधि विभाग। २०७१। राष्ट्रिय सूचना प्रविधि मार्गचित्र (२०७१-२०७५)। अप्रकाशित प्रतिवेदन।

[१४] नेपाल सरकार। २०७०। *आर्थिक वर्ष २०७०/२०७१ को व्यय अनुमान विवरण* । काठमाडौं : अर्थ मन्त्रालय।

[१५] His Majesty's Government (HMG). 2000. Information Technology Policy, 2057 v.s. Available at moste.gov.np/it_policy_2057_(2000_ad); accessed 24 September 2014.

[१६] Korea IT Industry Promotion Agency (KIPA). 2006. E-government Master Plan Consulting Report. Available at http://nitc.gov.np/download.php?mod=mydoc&f=documents%2Fe-GM P.pdf; accessed 24 September 2014.

[१७] Korean International Cooperation Agency (KOICA) and World Friends Korea. 2012. Ex-Post Evaluation Report on the Project for Establishing Government Integrated Data Center in Nepal. Unpublished report. Available at www.oecd.org/derec/korea/Ex-Post-Evaluation-Report-on-the-Project-for-Establishing-Government-Integrated-Data-Center-in- Nepal.pdf; accessed 27 October 2014; Shakya, Subarna. 2010. Governmental Integrated Data Centre (GIDC) is the Key Foundation for E-government Implementation in Nepal. *Prashasan* 115: 118–122.

[१८] नेपाल दूरसञ्चार प्राधिकरण। २०६१। *नेपाल दूरसञ्चार प्राधिकरण : एक चिनारी*। काठमाडौं : नेपाल दूरसञ्चार प्राधिकरण।

[१९] World Bank. 2001. Project Appraisal Document on a Proposed Credit in the Amount of SDR 17.50 Million (US $ 22.56 Million Equivalent) for the Kingdom of Nepal for Telecommunications Sector Reform Project. Unpublished report. Available at www-wds.worldbank.org/external/default/WDSContentServer/WDSP/IB/2001/12/01/000094946_01111504042481/Rendered/PDF/multi0page.pdf; accessed 12 October 2014.

पनि अध्यक्षले पूरै कार्यकाल काम गर्न पाएका छैनन् र यस्ता नियुक्तिलाई कानूनी रूपमा चुनौती दिने गरिएको छ।[२०] २०६९ मंसिर १९ गते अध्यक्ष दिगम्बर झाको नियुक्ति विरुद्ध परेको मुद्दाका कारण २०७१ कात्तिक ११ को अदालती फैसलाबाट झाको पुनःबहाली नभएसम्म प्राधिकरणको कामकारवाहीमा ठूलो व्यवधान आयो।[२१] कम्प्युटर एसोसिएसन अफ नेपाल (क्यान) ले प्राधिकरणले सरकारी नेपाल टेलिकमलाई नै काखी च्याप्ने गरेको आरोप लगाएको छ।[२२]

सूचना प्रविधि विभाग, राष्ट्रिय सूचना प्रविधि केन्द्र र नेपाल दूरसञ्चार प्राधिकरण यी तीनओटा संस्थामा सार्वजनिक स्रोत-साधनको धेरै हिस्सा खर्च भइसके पनि सरकार भने कहिले विद्युतीय शासनमार्फत बढी नियन्त्रण गर्नेतर्फ अग्रसर हुन्छ भने कहिले सीमित व्यापारीलाई यो फस्टाउँदो क्षेत्रमा एकाधिकार सुम्पिन उन्मुख देखिन्छ। सबैजसो इन्टरनेटसम्बन्धी नीतिले तत्कालीन सरकारको पहिलो चरणको उदारीकरण कार्यक्रम अनुरूप निजी क्षेत्रको संलग्नतामा जोड दिन्छन्। यी नीतिहरूले सूचना प्रविधि क्षेत्रको लागि अनुकूल वातावरण तयार गर्न सार्वजनिक-निजी साझेदारी, राष्ट्रिय अनि अन्तर्राष्ट्रिय लगानीको प्रवर्द्धन, र विद्युतीय कारोबारलाई सहजीकरण गर्न सिफारिस गर्छन्।[२३] यस्ता रणनीतिले प्रयोगकर्ताको छनोटमा विविधता ल्याउन सघाउँछ भन्ने तर्क तिनमा गरिएको छ। उदाहरणका लागि राष्ट्रिय सञ्चार नीति, २०४९ ले सरकारलाई दूरसञ्चारको विकास र सञ्चालनमा निजी क्षेत्रलाई अनुमति दिने बाटो खुला गऱ्यो।[२४] निजी लगानी भित्र्याउने अवसर प्रदान गर्ने यही प्रावधानलाई स्पष्ट पार्दै परिष्कार गरिएको दूरसञ्चार नीति, २०५६ ले नेपालको दूरसञ्चार क्षेत्रलाई उदारीकरणको बाटोमा लैजाने उपाय सुझायो।[२५] दूरसञ्चार ऐन, २०५३ ले दूरसञ्चार क्षेत्रमा स्वदेशी र विदेशी प्रत्यक्ष लगानीलाई सहज बनायो भने दूरसञ्चार नीतिले नेपाल दूरसञ्चार संस्थानलाई कम्पनीको रूपमा बदल्यो। यस्तो सार्वजनिक-निजी साझेदारीलाई सूचना प्रविधि नीति, २०६७ ले प्राथमिकता दिएको छ। सार्वजनिक स्रोत-साधनको अभाव भएकोले सो समस्या सुल्झाउन भन्दै सार्वजनिक-निजी साझेदारीको बहस दूरसञ्चार क्षेत्रमा आयो जबकि अपर्याप्त पूँजीगत खर्चका नियमित सरकारी प्रतिवेदन यो तर्कलाई खण्डन गर्न काफी छन् ।

सर्व-संयोजकतासम्बन्धी नीतिले व्यापारका लागि ‘राम्रो वातावरण’ बनाउन स्वदेशी सूचना, प्रविधि तथा सञ्चारका उत्पादनलाई विशेष सुविधा दिन्छ। नेपाली हार्डवेयर र सफ्टवेयरमाथि बौद्धिक सम्पत्ति अधिकारको सुनिश्चितता, एउटा विद्युतीय हार्डवेयर पार्क स्थापना गर्ने प्रतिबद्धता, विद्युतीय कारोबार/व्यापारलाई प्रदान गरिने सुविधा, सूचना प्रविधि र दूरसञ्चार सेवा क्षेत्रमा स्थानीय भाषाको प्रवर्द्धन, र सफ्टवेयर अनि बौद्धिक अधिकारको चोरी नियन्त्रण गर्न

[२०] रमेश कुमार। २०७१। भद्रगोल नियामक। *हिमाल* २३(२) : ३८-४०।

[२१] Kharel, Pranab and Sanjeev Giri. 2014. Apex Court Upholds Jha's Appointment as NTA Chief. *The Kathmandu Post*, 29 October, p. i (Money).

[२२] CAN-US. 2008. Progress and Challenges of ICT Development in Nepal. Available at www.can-usa.org/downloads/Nepal_ICT_Sector_Note_ March08.pdf; accessed 9 October 2014.

[२३] HMG. 1992. *National Communication Policy, 1992*. Kathmandu: Ministry of Information and Communications (MoIC); HMG. 1997. Telecommunication Act, 2053 v.s. Available at www.nta.gov.np/en/component/joomdoc/Acts/Telecom%20Act%20Upto%20date%20Eng.pdf/download; accessed 14 November 2014; Nepal Telecommunications Authority (NTA). 2001[1999]. Telecommunication Policy, 1999. Available at http://web.archive.org/web/20011217050053/http://www.nta. gov.np/telecompolicy.html; accessed 9 October 2014; HMG. 2003. Long-term Policy of Information and Communication Sector, 2059 v.s. Available at www.moic.gov.np/policies-directives/Long-term-Policy-of-Information-and-Communication-Sector-2059-eng.pdf; accessed 9 October 2014; HMG. 2000. Information Technology Policy, 2057 v.s. Available at moste.gov.np/it_policy_2057_(2000_ad); accessed 24 September 2014.

[२४] HMG. 1992. *National Communication Policy, 1992*. Kathmandu: MoIC.

[२५] NTA. 2001[1999]. Telecommunication Policy, 1999. Available at http://web.archive.org/web/20011217050053/http://www.nta.gov.np / telecompolicy.html; accessed 9 October 2014.

कानूनको परिमार्जन गर्ने तथा सम्बन्धित आधिकारवाला संस्थाको सक्रिय परिचालनले यो विशेष सुविधा दिन खोजेको देखाउँछ।[२६] यी गतिविधिबाट नेपाली राज्यले निजी क्षेत्रसँग स्वनियमनको अपेक्षा गरेको देखिन्छ जुन न्यूनतम राजकीय हस्तक्षेपसम्बन्धी अमेरिकी विचारसँग मेल खान्छ।[२७]

## धरातलीय नीतिको आवश्यकता

अरू देशजस्तै सम्पन्नतातिर लाग्ने हो भने सूचना, प्रविधि तथा सञ्चारको विकास गर्नुबाहेक नेपालसँग अर्को विकल्प छैन भन्ने स्वीकारोक्ति नेपालको सर्व-संयोजकतासम्बन्धी नीतिमा पाइन्छ। यी नीतिमा घरिघरि चर्चा हुने तीन अवधारणा हुन् : क) विकासका लागि सूचना, प्रविधि र सञ्चार, ख) विद्युतीय शासन, र ग) ज्ञानमा आधारित समाज। तर देशको सामाजिक र भौगोलिक असमानताका कारण डिजिटल प्रविधिमाथिको पहुँच र प्रयोगमा देखिएका संरचनात्मक र भौगोलिक असन्तुलनको मूल्याङ्कन गरी यी अस्पष्ट पदावलीलाई स्पष्ट कार्यक्रममा रूपान्तरित गर्नुपर्छ।

विकासका लागि सूचना सञ्चार प्रविधि वि.सं. २०१० र २०२० (सन् १९५० र १९६०) को दशकमा प्रचलित विकास-सञ्चार अवधारणाको निरन्तरता हो।[२८] यो अवधारणाअनुसार सञ्चारका साधनले तीव्र सूचना प्रवाह तथा प्रवर्तनको विस्तारद्वारा विकास प्रक्रियालाई गति दिन्छ भन्ने ठानिन्छ। वि.सं. २०२८ मा राष्ट्रिय सञ्चार सेवा योजना लागू गरी त्यसपछिका मिडिया र सञ्चार नीतिमा यही कुरा दोहोऱ्याएर यो अवधारणालाई आधिकारिक रूपमा आत्मसात गरियो ।[२९] वि.सं. २०२२ तिर (सन् १९६० को मध्य) देखि नै पश्चिमा आधुनिकीकरणको दृष्टिबाट प्रभावित भएको र सामाजिक असमानताका कारण सञ्चार माध्यममाथिको पहुँच कम गरी देशलाई अविकसित बनाउने संरचनागत असन्तुलनलाई बढावा दिएको भनी उक्त अवधारणा आलोचित रह्यो।[३०] तै पनि वि.सं. २०५० (सन् १९९०) को दशकदेखि संयुक्त राष्ट्र संघका संस्थाहरू, पश्चिमा दाताहरू र अन्तर्राष्ट्रिय लगानीकर्ताहरूले इन्टरनेट नियमनसम्बन्धी विकासवादी मोडलमा जोड दिँदै तेस्रो विश्वको द्रुत आर्थिक र सामाजिक विकासका लागि इन्टरनेट उत्प्रेरक रहेको विचार व्यक्त गर्न थाले।[३१]

नेपालले विकासका लागि सूचना सञ्चार प्रविधिको अवधारणा कार्यान्वयन गर्दै सन् २००० तिर सूचना सञ्चार प्रविधिलाई देशको सामाजिक र आर्थिक वृद्धिसँग जोड्न थाल्यो। सूचना प्रविधि नीति, २०५७ ले सूचना सञ्चार प्रविधिको प्रयोगमार्फत ''विद्युतीय व्यापार (E-commerce), विद्युतीय शिक्षा (E-education), दूर स्वास्थ्य (E-health) आदिको प्रवर्द्धन र ग्रामीण क्षेत्रमा प्रविधि हस्तान्तरण'' गर्ने र रोजगारीको अवसर बढाउने सोच बनाएको छ।[३२] दूरसञ्चार नीति, २०६० मा दूरसञ्चारलाई विकासको लागि

[२६] नेपाल सरकार। २०६७। *सूचना प्रविधि नीति, २०६७*। काठमाडौं : सूचना प्रविधि उच्चस्तरीय आयोग।

[२७] Eko, Lyombe. 2001. Many Spiders, One Worldwide Web: Towards a Typology of Internet Regulation. *Communication Law and Policy* 6(3): 445-484.

[२८] Melkote, Srinivas R. and H. Leslie Steeves. 2005. *Communication for Development in the Third World: Theory and Practice for Empowerment*. New Delhi: Sage Publications.

[२९] Maharjan, Harsha Man. 2011. Politics of 'Communications for Development': Intentions of National Communication Service Plans 1971 and Its Consequences on Three National Communication Institutions in Nepal (1971–1990). MA thesis, Tribhuvan University.

[३०] Inayatullah. 1967. Towards a Non-Western Model of Development. In *Communication and Social Change in the Developing Countries*. Daniel Lerner and Wilbur Schramm, eds., pp. 98–102. Honolulu: East-West Center Press; Rogers, Everett M. 1976. Communication and Development: The Passing of the Dominant Paradigm. Unpublished report. Available at www. cf-hst.net/unicef-temp/doc-repository/doc/ doc478697.pdf; accessed 12 October 2014.

[३१] Eko, Lyombe. 2001. Many Spiders, One Worldwide Web: Towards a Typology of Internet Regulation. *Communication Law and Policy* 6(3): 445–484.

[३२] श्री ५ को सरकार। २०५७। *सूचना प्रविधि नीति, २०५७*। काठमाडौं : विज्ञान तथा प्रविधि मन्त्रालय।

आवश्यक आधारभूत पूर्वाधार भनिएको छ।[३३] सूचना तथा सञ्चार क्षेत्रको दीर्घकालीन नीति, २०५९ ले पनि "सूचना सञ्चार प्रविधिको अनुसन्धान, प्रयोग र विस्तारमा जोड दिई समग्र सामाजिक तथा आर्थिक विकासको पूर्वाधारका रूपमा यस क्षेत्रलाई विकास" गर्न खोजेको छ।[३४] यी सबैले सूचना सञ्चार प्रविधिलाई देश विकास गर्ने मूख्य पूर्वाधारका रूपमा प्रस्तुत गरेका छन्। सूचना सञ्चार प्रविधिका परियोजनाले आर्थिक परिवर्तन आफैं ल्याउने हो कि यसबाट विकासका अवसर सृजना हुने हो भन्ने दुविधा यो प्रविधि-निर्धारित परिदृश्यमा भेटिन्छ।[३५] सूचना सञ्चार प्रविधिमा पहुँच नहुनु सामाजिक समस्या हो, प्राविधिक समस्या होइन।[३६] समावेशी र लोकतान्त्रिक सामाजिक र राजनीतिक वृतमा मात्र प्रविधिको सम्भावना निर्बाध बग्न सक्छ।

महत्त्वपूर्ण कुरा त सूचना सञ्चार प्रविधिमा रूपान्तरणको क्षमता हुन्छ भन्न अन्तरदेशीय तुलनात्मक तथ्य प्रमाण पुग्दैन। पहिलो, पूर्वाधारजनित पक्ष आफैं औद्योगिक उत्पादन, व्यवसायीकरणको मात्रा, र बसाइँसराइँको आवश्यकता जस्ता आर्थिक तथ्यमा भर पर्छ।[३७] अर्को शब्दमा, सूचना सञ्चार प्रविधिले अविकसित अर्थतन्त्रलाई भन्दा विकसित अर्थतन्त्रलाई अरू बढाउन सघाउँछ।[३८] दोस्रो, संयोजकताले भौतिक प्रवाहको पुनःसंयोजन गर्ने हो, परिमाणै बढाउँछ भन्ने छैन।[३९] सूचनाको गति बढ्दैमा सधैं प्रवर्तन र उपयोगी विचार र सीपकै प्रसार हुन्छ भन्ने पनि छैन। विकासको लागि सूचना सञ्चार प्रविधि अवधारणाले प्रवर्तन र प्रसारलाई मात्र जोड दिँदा कहिलेकाहीँ प्रवर्तनको भाग्य निर्धारण गर्ने प्रयोगतत्त्व उपेक्षित हुन पुग्छ।[४०] उदाहरणका लागि सूचना सञ्चार प्रविधिले पार्ने आर्थिक प्रभावबारे अध्ययनले यस्ता प्रविधिको योगदान मौखिक र कागजी प्रविधिभन्दा नगन्य भएको देखाउन पनि सक्छ। प्रविधि इतिहासको साहित्यले सर्व-संयोजकतासम्बन्धी नीति वितरित ज्ञान र वितरणको परिवेश सन्दर्भबारे संवेदनशील हुनुपर्ने औंल्याउँछ।[४१]

विद्युतीय वा डिजिटल शासनले सूचना सञ्चार प्रविधिलाई सरकार र मातहतका कार्यालयबीच, सरकार र व्यवसायबीच, र सरकार र नागरिकबीच हुने अन्तरक्रियाको माध्यमका रूपमा लिन्छ। यस अवधारणासँग शासन संयन्त्र अझ प्रभावकारी बनाउने, नागरिकलाई दिइने सुविधालाई गुणस्तरीय बनाउने, र लोकतान्त्रिक पद्धति दरिलो बनाउनेजस्ता सुशासनका लागि आवश्यक हस्तक्षेप जोडिएर आउँछ।[४२] त्यसैले सरकारी संस्थाको वेबसाइट बनाउने, एक वर्षभित्र सबै मन्त्रालय, विभाग र कार्यालयलाई इन्टरनेटमार्फत जोड्ने र सबै सरकारी सेवा इन्टरनेटमार्फत दिने उद्देश्य सूचना प्रविधि नीति, २०५७ ले राख्यो। सूचना

[३३] NTA. 2004. Telecommunication Policy, 2060 v.s. Available at www.nta.gov.np/en/component/joomdoc/Policies/TelecomPolicy_2004.pdf/ download; accessed 9 December 2014.

[३४] श्री ५ को सरकार। २०५९। *सूचना तथा सञ्चार क्षेत्रको दीर्घकालीन नीति, २०५९*। काठमाडौं : सूचना तथा सञ्चार मन्त्रालय।

[३५] Leye, Veva. 2007. UNESCO, ICT Corporations and the Passion of ICT for Development: Modernization Resurrected. *Media, Culture & Society* 29(6): 972–993.

[३६] Pieterse, Jan Nederveen. 2005. Digital Capitalism and Development: The Unbearable Lightness of ICT4D. In *Incommunicado Reader*. Geert Lovink and Soenke Zehle, eds., pp. 11–29. Amsterdam: Institute of Network Cultures.

[३७] Gurbler, Arnulf. 1990. *The Rise and Fall of the Infrastructure: Dynamics of Evolution and Technological Change in Transport*. Heidelberg: Physica-Verlag.

[३८] Walsham, Geoff. 2010. ICT for the Broader Development of India: An Analysis of the Literature. *The Electronic Journal on Information Systems in Developing Countries* 14(4): 1–20. Available at www.ejisdc.org/ojs2/index.php/ejisdc/article/view/665/317; accessed 20 November 2014.

[३९] Ahuja, Ravi. 2004. 'Opening up the Country'? Patterns of Circulation and Politics of Communication in Early Colonial Orissa. *Studies in History* 20(1): 73–130.

[४०] Edgerton, David. 2006. *The Shock of the Old*. London: Profile Books.

[४१] Mishra, Yogesh Ram. 2012. Manufacture at the Colonial Frontier: Iron and Salt Production Experiments in the East Indies, 1765-1858. PhD diss., Imperial College, London.

[४२] Gronlund, Ake and Thomas A. Horan. 2004. Introducing E-gov: History, Definitions, and Issues. *Communications of the Association for Information Systems* 15: 713–729.

प्रविधि उच्चस्तरीय आयोग र कोरिया सूचना प्रविधि उद्योग प्रवर्द्धन निकायले बनाएको विद्युतीय शासन गुरुयोजना परामर्श प्रतिवेदनले सम्भाव्य परियोजनाबारे विस्तृतमा चर्चा गरेको छ। प्रतिवेदनको मुख्य उद्देश्य भौगोलिक र जातीय भेदभाव नाघेर व्यक्तिको जीवनस्तर उकास्ने, पारदर्शी सरकार बनाएर सामाजिक आर्थिक विकास गर्ने, र सूचना सञ्चार प्रविधिमार्फत गुणस्तरीय सेवा प्रदान गर्ने थिए।[४३] एसियाली विकास बैंकले सहयोग गरेको 'आधुनिकीकरण' कार्यक्रमले राष्ट्रिय परिचय पत्र, सवारी चालक परिचय पत्र, भूमि अभिलेख व्यवस्थापन, टेलिसेन्टर, सरकारी सञ्जाल, र ग्रामीण विद्युतीय समुदाय जस्ता २२ ओटा सेवालाई प्राथमिकतामा राखेको थियो।[४४]

विद्युतीय शासन नेपालको कमजोर शासन प्रणालीको उपचार गर्ने धेरै विधिमध्ये एउटा हो। त्यो पनि सबैभन्दा प्रभावकारी ओखती भने होइन। सार्वजनिक संस्थामा सूचना सञ्चार प्रविधिको प्रयोग 'निश्चित र परिवेशमा आधारित' हुने भएकाले विद्युतीय शासन प्रणाली पूर्णरूपले अपनाउनुअघि विद्युतीय शासनका नमूना परियोजना लागू गरी यसले राम्ररी काम गर्छ भन्ने प्रमाणित गर्न आवश्यक छ।[४५] विद्युतीय शासनको राजनीतिक प्रकृतिलाई बेवास्ता गरेर नागरिकलाई उपभोक्ताका रूपमा लिँदा त्यसको लोकतान्त्रिक र सहभागीमूलक उद्देश्य ओझेलमा पर्न गएको छ।[४६] नेपालमा सरकारी वेबपोर्टल नागरिकको चासो र आवश्यकतालाई ध्यानै नदिई बनाइएका छन्।[४७] उदाहरणका लागि सूचना प्रविधि विभागको वेबसाइटमा सैद्धान्तिक रूपमा यस विभागले गर्ने विद्युतीय शासन गुरुयोजना मस्यौदा पुनरावलोकन, स्वतन्त्र र खुला सफ्टवेयरको प्रवर्द्धन र विकासजस्ता सैद्धान्तिक कदमबारे जानकारी दिइएको छ। तर यस विभागले गरिरहेका कार्य भने केही उल्लेख छैन। न यस विभागले केही विज्ञसँग अन्तरङ्ग गरेको सूचना प्रविधि मार्गचित्र मस्यौदाकै बारेमा त्यस वेबसाइटमा केही भनिएको छ। त्यस्तै अर्थ मन्त्रालयको वेबसाइटमा बजेट भाषण, रातो किताब, सेतो किताबजस्ता नयाँ र पुरानो सामग्री उपलब्ध छन् तर केही सामग्रीको लिङ्क काम गर्दैन। विद्युतीय शासनसम्बन्धी परियोजनाको अझ कल्पनाशील ढाँचाद्वारा माथिबाट सञ्चालित, एकतर्फी र कमजोर प्रकृतिको सेवा वितरण प्रणालीका साथसाथै नागरिकको व्यक्तिगत र निजी सूचनाउपर निगरानी गरिराख्ने स्वेच्छाचारी खालको राज्य दुवैलाई परिवर्तन गर्ने कुरा सुनिश्चित गर्न सकिनेछ।[४८] सूचना सञ्चार प्रविधिको प्रयोग गरी नागरिकले शासनमा अर्थपूर्ण सहभागिता जनाउन र राज्यको क्रुर नियन्त्रणबाट आफूलाई जोगाउन सकून् भन्नेतर्फ सूचना सञ्चार प्रविधि नीति केन्द्रित हुनुपर्छ।

नेपालमा ज्ञानमा आधारित समाजको विकासका लागि सूचना सञ्चार प्रविधि र विद्युतीय शासन दुवैलाई समेट्ने एउटा आदर्शवादी अवधारणा हो । युनेस्को, विश्व बैंक र विश्व दूरसञ्चार संघजस्ता अन्तर्राष्ट्रिय संस्थाले प्रसारमा ल्याएको अवधारणालाई दोहोर्‍याउँदै सूचना प्रविधि नीति, २०५७ ले नेपालमा 'ज्ञानमा आधारित समाज' र 'ज्ञानमा

[४३] KIPA. 2006. E-government Master Plan Consulting Report. Available at http://nitc.gov.np/download.php?mod=mydoc&f=documents%2Fe-GM P.pdf; accessed 24 September 2014.

[४४] Illawara Technology Corporation Ltd. 2007. Preparing the Information and Communications Technology Development Project: A Program of Modernization for Nepal. Unpublished report, ADB.

[४५] Bekkers, Victor and Vincent Homburg. 2007. The Myth of E-government: Looking beyond the Assumptions of a New and Better Government. *The Information Society* 23(5): 373–382.

[४६] Wade, Robert Hunter. 2002. Bridging the Digital Divide: New Route to Development or New Form of Dependency? *Global Governance* 8(4): 443–466.

[४७] प्रशासन पुनःसंरचना आयोग। २०६५। नेपालमा विद्युतीय शासनको प्रवर्द्धन। अप्रकाशित प्रतिवेदन, प्रशासन पुनःसंरचना आयोग।

[४८] Thomas, Pradip Ninan. 2012. *Digital India: Understanding Information, Communication and Social Change*. New Delhi: Sage Publications.

आधारित उद्योग' बनाउन खोज्यो।[४९] ठोस हिसाबले भन्दा त्यो नीतिले विद्युतीय व्यापार, सूचना प्रविधिको शिक्षा, विद्युतीय शासन, सरकारको सहजकर्ताको भूमिका, र सूचना प्रविधिको पूर्वाधार निर्माणमा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय लगानीमा जोड दियो। वि.सं. २०६७ मा संशोधित नीतिले पनि नेपाललाई 'ज्ञानमा आधारित समाज' मा रूपान्तरण गर्ने भनेको छ।[५०] यदि सूचना सञ्चार प्रविधिको उपादेयता बढाउने हो भने यो अवधारणाको प्रक्रियागत व्याख्या आवश्यक छ। 'सम्भवतः सबै समाज आ-आफ्नै किसिमका ज्ञानमा आधारित समाज' भएकाले परम्परागत ज्ञान उत्पादन, प्रसार, र प्रयोगको चरित्रले अहिले राष्ट्रिय अर्थतन्त्रमा कति प्रभाव पारेको छ भनेर मापन गर्न जरुरी छ।[५१] अध्ययनहरूले देखाएझैं डाटा भण्डारण, संरक्षण र वितरणको काम उत्पादनशील हुन व्यक्ति, व्यवहार, प्रविधि, संस्था, भौतिक वस्तु र सम्बन्धजस्ता ज्ञानका पूर्वाधारलाई बलियो बनाउन सक्नुपर्ने हुन्छ।[५२] सूचना सञ्चार प्रविधिले यी पूर्वाधारको विकासमा कति सघाएको छ भन्ने प्रश्नको उत्तर नेपालमा खोज्न बाँकी नै छ।

## निष्कर्ष

नेपालमा सर्व-संयोजकतासम्बन्धी नीतिहरू धरातलीय ज्ञान र अनुभवजनित तथ्यसँग मेल खाने खालका छैनन्। सूचना सञ्चार प्रविधि नीति निर्माण र प्रयोगबारे उपलब्ध सामग्री दुविधाग्रस्त छन् : समर्थकहरू एकदुई अनुभवमा आधारित किस्सामार्फत आफ्नो तर्क पुष्टि गरिरहेका छन् भने आलोचकहरूले जाँच्न सकिने प्रमाणको परीक्षण गर्न सकिरहेका छैनन्। यसको साटो विकासका लागि सूचना सञ्चार प्रविधिलाई विकासशील देशमा वैदेशिक सहयोगले बनाएको प्रविधिको परनिर्भरताको एउटा रूप देखेरहरू आफ्नो आन्दोलनलाई बचाउने धुनमै देखिन्छन्।[५३] विद्युतीय शासनलाई मिथ्या ठान्ने केही अध्येत्ता सूचना सञ्चार प्रविधिले "मानिसलाई कुनै पनि मूल्यमा त्यो सुविधा पाउनैपर्ने" चाहना जगाउँछ भन्छन्।[५४] जसले जे भने पनि नेपाली नीतिले सार्वजनिक स्रोतसाधन परिचालन गर्ने, नयाँ संस्था निर्माण गर्ने, नेपालमा सूचना प्रविधिमा काम गर्ने केही सम्भ्रान्तको व्यापारिक स्वार्थ पूरा गर्ने आधार बनाएको छ। यस पुनरावलोकनले अस्पष्ट र कमजोर शब्दावलीको प्रचारमा मात्र ध्यान दिँदा अवसर खेर जानसक्ने सम्भावनालाई इंगित गर्दछ। 'विकासको मूल फुटाऊँ' र 'एसियाली मापदण्ड' जस्ता खोक्रा नाराको उद्देश्यबाट नागरिक चाँडै नै भ्रान्तिमुक्त हुन्छन् भन्ने कुरा नेपालको इतिहासले देखाइसकेको छ। त्यसैले नयाँ र आकर्षक नारा सिर्जना होइन, सीमान्तीकृत र कमजोर समूहलाई मूलप्रवाहीकरण गर्दा प्रविधिको कठिनाइलाई स्वीकार्दै तथ्यमा आधारित सर्व-संयोजकतासम्बन्धी नीति बनाउनु समाधान हुन सक्छ।

[४९] श्री ५ को सरकार। २०५७। *सूचना प्रविधि नीति, २०५७*। काठमाडौं : विज्ञान तथा प्रविधि मन्त्रालय।

[५०] नेपाल सरकार। २०६७। *सूचना प्रविधि नीति, २०६७*। काठमाडौं : सूचना प्रविधि उच्चस्तरीय आयोग।

[५१] UNESCO. 2005. *Towards Knowledge Societies*. Paris: UNESCO.

[५२] Borgman, Christine L. 2015. *Big Data, Little Data, No Data: Scholarship in the Networked World*. Cambridge: MIT Press.

[५३] Wade, Robert Hunter. 2002. Bridging the Digital Divide: New Route to Development or New Form of Dependency? *Global Governance* 8(4): 443–466.

[५४] Bekkers, Victor and Vincent Homburg. 2007. The Myth of E-government: Looking beyond the Assumptions of a New and Better Government. *The Information Society* 23: 373–382.